mandala theatre-nepal

नाटक

# सिरुमारानी



लेखक : सरुभक्त

परिकल्पना : राजन खतिवडा

निर्देशक : दयाहाङ राई

मिति : भदौ ११ - असोज १० गते २०७२

(सोमबार बाहेक हरेक दिन)

समय : साँझ ५:१५ देखि

स्थान : मण्डला नाटकघर, अनामनगर

(सिंहदरबार पूर्वीगेट अगाडि)

सम्पर्क : ०१-४२४९७६१

fb.com/MandalaTheatreNepal @MandalaTheatre http://www.mandalatheatre.com

## नाटकको बारेमा

पाका रंगकर्मी तथा लेखक सरूभक्तद्वारा डेढ दशकअघि लेखिएको नाटक **सिरूमारानी**मा एउटी नारीले आफूमाथि जवरजस्ती लादिएको कर्तव्यको सट्टामा आफ्नो नारीधर्म बचाउन गरेको संघर्षको कथा भनिएको छ । लोकशैलिमा लेखिएको नाटक मूलतः प्रेमकथामा आधारित छ । कुनै एउटा गाउँमा माछा मारेर आफ्नो जीविकोपार्जन गर्ने एउटा माछे छ । उसको जालमा एक दिन अनौठो प्रकारको माछा पर्छ । माछेले कहिल्यै पनि त्यस्तो माछा देखेको हुँदैन । घर पुगेर आफ्नो पेरूङ्गोबाट त्यो माछा निकाल्दा माछा एक अनिध्य सुन्दरीमा प्रकट हुन्छे । सुन्दरी श्रापित नागराजकुमारी हो भन्ने कुरा माछेले सुन्दरीबाटै थाहा पाउँछ । सुन्दरीसँग माछेले घरजम गर्छ । उनीहरूको एक छोरी जन्मिन्छे - सिरू । छोरी जन्मेपछि सुन्दरी नागलोक नै फर्किन्छे । त्यतीबेलै एकजना अन्धा भविष्यवक्ताले सिरू चक्रवर्ती महाराजाकी रानी हुने कुरा भविष्यवाणी गरिदिन्छन् ।

सिरू १६ वर्षकी हुँदा गाउँकै ढाक्रेको छोरोसँग प्रेममा पर्छे । तर सिरूको विहे चक्रवर्ती महाराजसँग नै हुन्छ । चक्रवर्ती महाराजले आफनो युवराज छोरासँग उमेर र जवानी साटफेर गरेको सिरूले दरवार पुगेपछि थाह पाउँछे । 'आफ्नो पति को हो ?' भन्ने दुविधामा सिरू पर्छे । उसले आफ्नो दुविधाको समाधान खोज्दा चक्रवर्ती राजाको दरबार तहसनहस हुन्छ ।

नाटकमा एउटा संवाद छ -'पुरूष एकाधिकारवादी विश्वमा एक नारीले नारीत्वको अस्तित्व खोज्दा पुरूषआर्जित भोग, कर्तव्यपरायणता र साम्राज्यशक्तिका अहमलिप्साहरू कति कमजोर र तुच्छ सावित हुँदारहेछन्, यो एक विरल उदाहरण हो', हामीलाई लाग्छ- यो संवाद नै नाटकको मूल सार हो ।

## Story Synopsis

Sirumarani tells the story of a woman who struggles to secure her womanhood amongst her relationship and responsibilities. The play is written in a folklore style based on the Western part of Nepal and carries different love stories as its base.

There is a fisherman in a village. Once, he traps a golden fish in his fishing-net. He takes that fish to his home and finds it to be a tremendously beautiful lady. He comes to know that the lady is actually a cursed snake-fairy. The fisherman marries the lady and they have a baby daughter- Siru. After getting the baby, the snake-fairy leaves her husband and daughter behind and goes to her own world. A blind prophet, forecasting his daughter's good fortune, says that Siru will become the queen of a powerful king of the world.

But Siru falls in a love with a poor porter in her youth. Knowing about the forecasting, her father is furious and Siru ends up marrying a powerful king instead. However, she soon learns that she married the king in the body of his son. Siru entangles herself in a dilemma to recognize her actual husband. She tries to find out the solution and this endeavor of Siru collapses the royal palace.

## निर्देशकीय

२०६० सालतिर नाटक सिरूमारानीमार्फत नै मैले जीवनमा पहिलोपटक मञ्च टेकेको थिएँ । त्यतिबेला नाचघरले चलाएको एउटा २० दिने कार्यशालाको प्रोडक्शनस्वरूप यो नाटक अनुप बराल सरले निर्देशन गर्दै हुनुहुन्थ्यो । 'ब्याकस्टेजमा गर्ने कुनै काम पाइन्छ कि/सिकिन्छ कि' भन्दै त्यो कार्यशालामा गएको मलाई अनुप सरले विश्वास गरेर 'अनस्टेज रोल' दिनुभयो । त्यसयता मैले नेपथ्यमा भन्दा बढी मञ्चमा काम गरे । पछि सिनेमामा काम गर्दा पनि क्या( मेराअगाडिको भूमिकामा बढी प्रस्तुत भए । एउटा अभिनेताको रूपमा म अहिले जुन ठाउँमा छु, नाटक सिरूमारानी त्यसको आधारशिला हो ।

'ब्याकस्टेज'मा काम गर्ने/सिक्ने तिर्सना मेट्न म प्राय नाटक लेखन र निर्देशन गर्छु । म आफूले लेख्ने र निर्देशन गर्ने नाटकहरूमा प्रायः कथा हुँदैनन् भन्ने मेरा शुभचिन्तकहरूको गुनासोलाई यो नाटकले सम्बोधन गर्न सक्ला किनकि सरूभक्त दाईले एउटा अति नै राम्रो कथा पहिल्यै लेखीदिईसक्नुभएको छ । मेरालागि यो नाटक निर्देशन गर्नु भनेको 'बाउले बनाएको घरलाई छोरोले रंगरोगन गर्नु' जस्तै भएको छ ।

मण्डलाका लागि यो नाटक शुरूमा साथी राजनले बनाउने सल्लाह भएको थियो । पछि उनले नभ्याउने भएपछि मेरो हात लाग्यो । मेरालागि यो अवसर र चुनौति दुवै थियो । अवसर यसकारण कि मैले आफ्नो अभिनय यात्राको १२ वर्षपछि आफ्नो गुरूलाई वहाँकै नाटक गुरूदक्षिणास्वरूप प्रदान गर्दैछु, चुनौति यसकारण कि मैले अहिलेसम्म निर्देशन गरीआएका नाटकहरूभन्दा यसको नाट्यपाठ भिन्दै किसिमको छ । नाटकमा साथी राजनकै परिकल्पनालाई आधार बनाएर मैले केहि नयाँ रूपमा आफूलाई प्रस्तुत गर्न खोजेको छु । पहिलोपटक मञ्च टेक्दै गरेका कलाकारहरूलाई सकेसम्म तिखार्ने कोशिश गरेको छु ।

मलाई विश्वाश गरेर नाटक गर्ने अनुमति दिनुभएकोमा दाजु सरूभक्तप्रति विशेष आभारी छु । नाटकलाई यो रूपसम्म ल्याइपुऱ्याउन सहयोग गर्ने साथीहरू राजन खतिवडा, बुद्धि तामाङ र सोमनाथ खनालप्रति कृतज्ञ छु । सधैंभैँ मेरो नाटकमा प्रत्यक्ष संगीत दिएर सहयोग गर्ने आधा सुर र मञ्च तथा नेपथ्यमा काम गर्ने सम्पूर्ण कलाकारहरूप्रति हार्दिक आभार प्रकट गर्दछु ।

मलाई यही नाटकमार्फत अभिनेता बनाउनुहुने आदरणीय गुरू श्री अनुप बराल र तपाईं सम्पूर्ण दर्शकहरूलाई यो नाटक समर्पण गर्न चाहन्छु ।

## मण्डलावाणी

पृथ्वी गोलो छ र घुमिरहेको छ भन्ने हामीलाई कितावमा पढ्दा मात्रै महशुश हुन्छ । यसपाला त्यस्तै केहि भएको छ । जस्तै; निराशा र आशाको बीचमा एउटा मसिनो धर्को हुन्छ होला । देश सायद त्यहीको धर्कोभित्र निकासको बाटो खोजीरहेको होला । हामी भने केहि थाह नपाएझैं गरी अहोरात्र नाटक निर्माणमा खटिएका छौं । पूर्वाभ्यासका केहि दिनहरूमा त घाम उदाएको र अस्ताएको पनि पत्तो पाइएनछ । कैलालीमा भएको रक्तपातपूर्ण घटनाको खवर हामीले पूर्वाभ्याससमै सुनेका थियौं । भावुक र दुखी पनि भएका थियौं । हामी मौन बसेका थिएनौ तर मौन बसेकाजस्तै देखिन्थ्यौं । जे भयो त्यो हाम्रो पहुँचभन्दा टाढाको कुरा थियो, कल्पनाभन्दा पनि टाढाको । हामीले दुखी हुनबाहेक केहि चारा देखेनौं ।

डेढ दशकअगाडि आदरणीय दाजु सरूभक्तले कल्पना गरेर लेख्नु भएको प्रस्तुत नाटक सिरूमारानीमा पनि यस्ता केहि प्रसंगहरू छन् जसले डेढ हप्ताअगाडिका हाम्रा परिवेशहरूसँग रूप साटेको भान हुन्छ । गाली गरेको हैन, तर राजनेताहरूमा व्याप्त सत्तामोह, विलासिता अनि देश र जनताप्रतिको गैरजिम्मेवारीपन नाटकमाझैं दुरुस्त लाग्छ देशमा । यस्तै अवस्थामा 'क्यार्न सकिन्छ र ?' भनेर बस्नुभन्दा आफ्नो नियमित काममा फर्कनु वेश ठान्यौ र हामीले फेरि नियमित नाटक मञ्चनलाई रोजेका छौं ।

तीन महिनाको नाट्यकला प्रशिक्षणपश्चात नाटक मञ्चनमा उत्रिएका सवै युवा रंगकर्मीहरूलाई शुभकामना । नाटककार सरूभक्त दाईलाई आभार । हामी मण्डलाका सवै साथीहरूको सहयोगमा दयाहाङले नाटक तयार पारेका छन् ।

हाम्रो 'टीमवर्क' तपाईंहरूलाई कस्तो लाग्यो, प्रतिक्रिया दिनुहोला ।

**-राजन खतिवडा**

## मञ्चमा

अन्धा : सन्दिप पौडेल
अन्धी: शारदा अधिकारी
माछे: बिजय बराल
सुन्दरी: प्रेमवर्षा
सिरू: निशा कार्की
ढाके: सन्दिप पौडेल
गोरे: जीवन भट्टराई
राजा/युवराज: सोमनाथ खनाल
युवराज/राजा: अनुप न्यौपाने
राधादासी: खुशी
महामन्त्री: बिशाल डोटेल
सेनापति: सुरज श्रेष्ठ
द्वारे सैनिक: सन्दिप श्रेष्ठ
राजगुरू: मिलन कार्की
ब्रम्हर्षी: सागर खाती
महर्षी : सिजन दाहाल
सैनिकहरू: रियर राई, रोहित पौडेल, दिलजङ गुरूङ र विज्ञान गजुरेल
सहेलीहरू: बिनिता गुरूङ,खुशी

## नेपथ्यमा

मञ्च निर्माण: बिजय बराल, हुम बिसी, अंकित खड्का र जीवन भट्टराई
मञ्च सामाग्री : रोहित पौडेल, सन्दिप श्रेष्ठ, सुरज श्रेष्ठ र सागर खाती
भेषभुषा: मोहनराज अधिकारी, सन्दिप पौडेल र खुशी
प्रकाश परिकल्पना: बुद्धि तामाङ
परिचालन: इँगी होपो कोइँच सुनुवार (देव) र शक्ति राई
संगीत निर्देशन: आधा सुर
प्रत्यक्ष वाद्यवादन: आधा सुर, दिपक श्रेष्ठ र विनोद गाउँले
पोस्टर/ब्रोसर: सिजन दाहाल
रङ : सजन थापा
स्वागत सत्कार: आर्जेश रेग्मी, आयान खड्का र भाष्कर वली,
अभिलेख: अनुप न्यौपाने
सुचना तथा टिकट: केनिपा सिँह
कार्यालय व्यवस्थापन: सपना कुमारी चौधरी
कक्षा संयोजक : सुलक्षण भारती
वित्तिय व्यवस्थापक: उमेश तामाङ
मञ्च व्यवस्थापक: मिलन कार्की
परिकल्पना: राजन खतिवडा
निर्देशन सहयोगी: सोमनाथ खनाल र बुद्धि तामाङ
लेखक : सरूभक्त
निर्देशक: दयाहाङ राई


### हार्दिक आभार

अनुप बराल, प्रवीण खतिवडा,जुलिया स्यारिङ्गर, राजकुमार पुडासैनी, ज्याक गुरू, विक्रम परियार, कृपा बज्रचार्य, शुशिलराज पाण्डे, राम कुमार बानियाँ, भद्रगोल किराँती र मण्डलाका छरछिमेकीहरू ।


## हाम्रा सहयोगीहरू









For regular updates on theatre activities in Nepal,
you can log into www.theatrehub.org
or download the app Theatre Hub from google play store.